# नेपालमा प्रचलित लिपिको परिचय

- काशीनाथ तमोट

विविध लिपि र सुलेखनको लागि नेपाल विश्वमा प्रसिद्ध छ। यसको साढे बाईस सय वर्ष पुरानो लिपिं प्रचलनको इतिहास छ। यो भारतीय उपमहाद्वीपीय बौद्धिकहरूको आश्रयस्थल भएको हुँदा लामो ऐतिहासिक घटना क्रममा यहाँ लेखनको सुदीर्घ र सुहस्त प्रयोगहुन गयो। भारतीय परम्पराकै भएरपनि मध्यकालीन नेपालमा तत्कालीन भारतीथभन्दा भिन्न आफ्नै पहिचानको लिपिको प्रचलन भयो जसलाई पछि नेपाललिपि भनियो र आजकल नेवारे तर लेखकहरू यसलाई नेवारी लिपि भन्ने गर्दछन्। इतिहासको क्रममा पश्चिमी पहाडी शासकहरू क्रमशः पूर्वतिर राज्य विस्तार गर्दै आउँदा उतातिर शुरूदेखि प्रचलित देवनागरी लिपिले क्रमशः राष्ट्रव्यापी स्थान ग्रहण गर्दै गयो। हस्तलेखनको यो ढिलो चाललाई ई. १८५० दशकमा नेपालमा यन्त्र मुद्रणले प्रवेश पाएपछि र विशाल भारतको बहु सङ्ख्यक जातिले नागरीलाई ग्रहण गरेकाले नेपालमा देवनागरी चाँडै एक मात्र औपचारिक लेखनको माध्यम हुँदै गयो। आज यो नेपालको राष्ट्रभाषा नेपालीको माध्यम लिपिं भएको छ र टङ्कण, मुद्रण सुविधाको कारण अरू भाषाभाषीको पनि यो साझा लिपि हुन गएको छ।

## १. ब्राह्मी लिपि

नेपालमा प्राप्त सबभन्दा पुरानो लिपि ब्राह्मी हो। यो ईशापूर्व तेस्रो शताब्दीको भारतीय मौर्यवंशी राजा अशोक (ई. पू. २७३-२३१) को प्रस्तरस्तम्भ अभिलेखमा नेपालको तराई क्षेत्रमा पाइएको हो। नेपालमा जम्मा तीन ओटा गोटिहवा (अभिलेख अप्राप्त), निग्लिहवा (ई. पू. २५५) र लुम्बिनी (ई. पू. २४९) मा अशोक स्तम्भ भेट्टाइएको छ। यस लिपिलाई अशोक लिपिं पनि भनिन्छ तर स्वयं अशोक भने यसलाई धम्मलिपि (धर्मलिपि) भन्दथे।

नेपालमा अशोकको राज्याभिषेक संवत् २० (ई. पू. २४९) को लुम्बिनी अभिलेखपछि राजा शालिबहानको शक संवत् ३८१ (ई. ४५९) को पशुपति अभिलेख अघिसम्म गरी ७०८ वर्षभरिका कुनै अभिलेख पाइएको छैन। यस अवधिमा भारतमा शुङ्ग ब्राह्मी (ई. पू. ८५-६३), कुषाण ब्राह्मी (ई. पू. ५०-ई. ३२०) र गुप्त लिपि (ई. ३२०-५५४) प्रचलित रहे। शुङ्ग, कुषाण र गुप्त भारतीय शासक बंशका नाम हुन्। यसबेला नेपालमा किराँत (अन्दाजी ई. पू. ७००-ई. १००) र अभिलेख अप्राप्त प्रारम्भिक लिच्छवि (ई. १००-४५९) काल रहेको थियो। त्यसबेला नेपालमा मूलतः भारततिरका लिपिबाटै काम चलेको ज्ञात हुन्छ। कला-इतिहासकारहरू कुषाणकालीन मूर्तिहरू नेपालमा रहेको विश्वास गर्छन्। २०३९ पुसमा पशुपति भण्डारखालको वासुदेव सिग्देलको घर खन्दा दुई कुषाण आहत मुद्रा आर्थिक इतिहासकार रमेश ढुङ्गेलले पाउनु भयो। भारतीय प्रतापी राजा समुद्रगुप्तले (अ. ई. ३३६-३७५) पहिलो पटक अभिलेखमा 'नेपाल' शब्द सीमानाका राज्यको रूपमा उल्लेख गरिएको हुँदा उक्त सात सय वर्षमा नेपाल भारतको अभिलेखीय प्रभाव क्षेत्र रहेको थाहा हुन्छ। यस अवधिमा यहाँ अभिलेखको अभाव हुनाका कारण त्यसबेला नेपालमा शक्तिशाली र दिगो शासक नहुनु हो।



सप्ताक्षरी कूटाक्षर

ब्राह्मी लिपि भारतीय उपमहाद्वीपको प्रायःजसो लिपिको जननी हो। आर्यहरूको आफ्नो सांस्कृतिक कार्यको सुदूर ऐतिहासिक गौरवलाई अपौरूषेय भन्न रूचाउने तथा कुनै कामलाई पनि देवत्व प्रदान गर्ने स्वभाव हुँदा इतिहास ठम्याउन नसकेको यस ब्राह्मी लिपि-लाई ब्रह्माद्वारा सृष्टि गरिएको भनी आरोपित गरिएको छ। यो कसैद्वारा बनाइएको नभई आदिमकालका मानिसहरूद्वारा निर्मित वस्तुको प्रतीकात्मक चित्रबाट क्रमशः विकास भई लामो ऐतिहासिक प्रयोगक्रममा स्थिर हुन आएको वर्णमाला हो। केही भारतीय प्राचीन लेखनविद्हरू यसलाई सिन्धुलिपिसँग गाँस्न खोज्छन् तथा कोही चाहिं भारतकै मूल लिपि ठान्दछन्। पश्चिम–लेखनविद्हरू यसलाई कोही ग्रीसेली लिपि, कोही फोनिशियाली (लेवनान-सिरियाली) लिपिबाट विकसित भएको मान्दछन्। यी कुराहरू अध्ययन गर्दा प्राक् भारत-युरोपेली अर्थात् भारोपेली भाषा भए झैं प्राक्भारोपेली लिपि पनि भएको अनुमान गर्नुपर्ने देखिन्छ, जसबाट पश्चिममा फोनिशियाली, त्यसबाट ग्रीसेली, त्यसबाट प्राचीन ल्याटिन र त्यसबाट हालको रोमन लिपि बिकसित भए भने पूर्वमा लामो अन्तरालमा ब्राह्मी देखापर्‍यो र त्यसबाट भारतीय उपमहाद्वीपमा विविध लिपि जन्मे।

## २. लिच्छवि लिपि

नेपालको इतिहासमा प्राचीन लिच्छवि कालमा प्रचलित अभिलेखको लिपिलाई लिच्छवि लिपि भन्न सकिन्छ। यसबेला अभिलेखमा दुई संवत् प्रयोग भएको पाइएको छ। जस्तोः-

क. (शक) संवत् ३८१ देखि ५३५ सम्म ई. ७८ देखि शुरू संवत्

ख. (मानदेव) संवत् २९ देखि ३०१ सम्म- ई. ५७६ देखि सुरू संवत्

यही संवत् प्रयोगको आधारमा लिच्छवि काललाई नेपालका धेरैजसो इतिहासकारहरू अभिलेख प्राप्तिको आधारले दुई भागमा बाँडने गर्दछन्। जस्तोः-

१. पूर्वलिच्छवि (ई. ४५९-५७६) - पाँचौं-छैठौं शदी

२. उत्तरलिच्छवि (ई. ५७६-८७९) - छैठौं-नवौं शदी

नेपालको लिच्छवि अभिलेख तथा लिपिको अध्ययन सर्वप्रथम भगवान्लाल इन्द्रजी र जर्ज बुहलरले ई. १८८० मा इन्डियन एन्टिकेरीमा "नेपालका अभिलेख" नामले लामो लेख छापी गरे। तर लिच्छवि लिपिलाई गुप्त र कुटिल लिपि भनी चिनाउने चलन बढ्यो। यसमा रेनियो नोलीले त गुप्त लिपिमा नेपालका अभिलेख (दुई भाग, ई. १९५६, अङ्ग्रेजी) नै नाम राखे। यसो हुँदा २०१७ असारतिर श्री ५ को सरकार पुरातत्व विभागले गुप्तलिपि भनिआएकोलाई पूर्वलिच्छवि लिपि र कुटिल लिपि भनिआएकोलाई उत्तर लिच्छवि लिपि भन्ने निर्णय गरेकोले हाल नेपालमा यी नामको चलन बढ्दै गएको छ। तर पनि लिपि तथा अभिलेखको दृष्टिले लिच्छवि लिपिलाई दुईदेखि पाँच भागसम्म बाँडेको पाइएको छ।

**नेपाललिपिको नौ शैलीको पर्याय नामावली**

| नेवारी नाम | संस्कृतको नाम | नेपाली अर्थ |
|---|---|---|
| १. रञ्जना लिपि | रञ्जनाक्षर | रञ्जना लिपि |
| २. भुजिंमोल | मक्षिमुण्ड | झिङ्गाटाउके |
| | भुजङ्गमुण्ड | सर्प " |
| | भुजबलाक्षर | बाहुबल लिपि? |
| ३. कुंमोल | कोणमुण्डाक्षर | कुना टाउके |
| ४. हँय्मोल | परामुण्डाक्षर | कुखी " |
| ५. गोलमोल | गोलमुण्डाक्षर | गोल " |
| ६. पाचुमोल | सममुण्डाक्षर | सम " |
| ७. तिमोल | वेष्ठितमुण्डाक्षर | प्रश्रो " |
| ८. लितुमोल | नतमुण्डाक्षर | उँधो " |
| ९. प्रचलित लिपि | प्रचलित लिपि | प्रचलित लिपि |

**२.१ पूर्व लिच्छवि लिपि-** नेपालमा यो नाम विस्तारै लोकप्रिय हुँदै गए पनि कतिपय विद्वानहरू यसलाई गुप्तलिपि नै भन्न रूचाउँछन्। सम्पूर्ण उत्तर भारतमा चौथो-छैठौं शदीमा गुप्त वंशको आधिपत्य भएको र यस लिपिको व्यापकता भएको, यसको अध्ययन बढी भएको आदि कारणले यसको लोकप्रियता बढेको हो। गुप्त लिपि भनेर कसैकसैले तेस्रो-सातौं शताब्दी बुझाउन र अन्य कोही दशौं शताब्दीसम्मको लागि पनि प्रयोग गर्छन्। पूर्वलिच्छवि लिपि भन्नाले गुप्त लिपिकै नेपालको स्थानीय रूप भन्ने बुझिन्छ। नेपालमा पूर्वलिच्छवि लिपिमा लेखिएका करीव ६० प्रस्तर अभिलेख पाइएको छ।

**२.२ उत्तरलिच्छवि लिपि-** नेपाल, भारत, बङ्गलादेश, पाकिस्तानतिर प्रचलित गुप्तलिपिबाट विकसित छैठौं- नवौं शताब्दीको एक प्रकारको लिपिलाई कुटिलाक्षर वा कुटिललिपि मानिन्छ। यसको नेपालमा प्रचलित शैलीलाई उत्तर लिच्छवि लिपि भनिएको हो। यस अवधिका प्राप्त विविध नामहरूमध्ये विकटाक्षर (ई. ६६१), कुटिलाक्षर (ई. ९९२), रूचिराक्षर, सद्वर्ण, सिद्धमातृकामध्ये तत्कालीन लिपिको विशेषतामा बायाँबाट दायाँ सीधा रेखामा बीचको अंश कुटिल ढङ्गले (घुमाएर) लेख्ने शैलीको प्राधान्य भएको मानी कुटिलाक्षर नाम लिपिविद्हरूले बढी उपयुक्त ठानेका हुन्। इतिहासमा भाषा, संवत्, मुद्राको नाम चलेको भन्दा केही पछि नै मात्र त्यसको नाम देखापर्ने तथ्य यहाँ स्मरणीय छ। यहाँ 'कुटिलाक्षर' नाम पनि आफ्नो समयभन्दा पछि देखापरेको त्यसैले हो। दक्षिण एशियाली क्षेत्रमा यो नाम बढी चल्ती भए पनि उत्तर एशियाली क्षेत्रमा यसको सिद्धम् वा सिद्धमातृका नाम बढी प्रचलित छ।

नेपालमा उत्तर लिच्छवि लिपिमा लेखिएका शिलाभिलेख करीव ८० वटा पाइएको छ। चाँगु नारायणको आसनीको तल अंशुबर्माको ई. ६०७ को एउटा सुवर्णपत्र पनि पाइएको छ। केही धातु मूर्तिहरूमा पनि यो लिपि कुँदिएका पाइन्छन्। यस लिपिमा ताडपत्राभिलेख पाइएकोमा स्कन्दपुराण (ई. ८१०, राष्ट्रिय अभिलेखालय), परमेश्वरतन्त्र (ई. ८२८, क्याम्ब्रिज विश्वविद्यालय,) सहोतरतन्त्र(ई. ८७८, केशर पुस्तकालय,) आदि उल्लेखनीय छन्।

## ३. गोली अक्षर

गोपालराज वंशावलीको पत्र २२ क. ५ मा लेखिएको छः- "राजा श्रीभूमिगुप्त वर्ष ४५ तेन नेपाले गोली नाम अक्षर प्रवर्तते।" (राजा भौमगुप्तले ४५ वर्ष शासन गरे। तिनले नेपालमा गोली नामको लिपि चलाए।)

यो कुरो यहाँ विशेष खोजीको विषय छ।

इतिहासकार धनवज्र बज्राचार्यले भने झैं यहाँ उल्लिखित भूमिगुप्त अन्य ठाउँमा उल्लिखित भौमगुप्त नै हुन्। भौमगुप्त काठमाडौं हाँडिगाउँ सत्यनारायण स्थानको प्रसिद्ध द्वैपायन स्तोत्र (ई. ५३० दशक) को रचयिता कवि अनुपरम (मृ. ई. ५४०) तथा आभिरी गोमिनीका पुत्र हुन्। यिनी जिष्णुगुप्त (ई. ६२४-३९) का बाजे हुन्। एक समयका महाप्रतिहार सर्वदण्डनायक (ई.५५७-५९०) तथा परम देवत (ई. ५६६) भौमगुप्तलाई काठमाडौं केवलपुरको ध्रुवदेव (ई. ६२४-२५) जिष्णुगुप्तको अभिलेखमा 'पूर्वराज' को रूपमा उल्लेख गरिएको छ। यसो हुँदा राजा मानदेव द्वितीयले मानदेव संवत् ई. ५७६ मा चलाउँदा भौमगुप्तले त्यसैताका 'गोली अक्षर' चलाउन असम्भव छैन। नेपालमा राजा पछिका प्रधानमन्त्री सरहका व्यक्तिले कहिलेकाहीं राजा सरहका काम गर्ने परम्परा पनि छँदैछ। अर्को कुरा नेपाल संवत् ई. ८७९ मा फेरिंदा नेपाल लिपिको प्रारम्भिक स्वरूप पनि कोरिन लागेको सङ्गति यहाँ स्मरणीय छ। दिनेशचन्द्र रेग्मी र जगदीशचन्द्र रेग्मीले 'गोली' शब्द गौडी (बङ्गाली) को




अपभ्रंश हुनुपर्छ भन्ने ठानेका छन्। तर दिनेशचन्द्र ई. ५०६-५८९ ताका नेपालमा नौलो परिपाटीको नयाँ लिपि चलेको मात्र दसी अपर्याप्त रहेको कुरा आफ्नो पुस्तक पुरालेखन परिचय, नेपाल (२०४८) मा बताउँछन्।

गोली अक्षरको अर्थ माथि उल्लिखित गौडी बाहेक गोलोकी ("गाईको संसारको") हुँदै गोली अर्थात् आभिरी (गोठाला) जातिले

चलाएको भाव आउने शब्द पनि हुन सक्छ। भौमगुप्त आभिरी हुन्। यसको अर्को बढी सम्भाव्य अर्थ "गोल परेको" हुनसक्छ।

भौमगुप्तले नयाँ लिपि प्रचलनमा ल्याएको हुनाले हुनसक्रे एउटा सम्भावना प्रसिद्ध महायानी नवग्रन्थ मध्ये एक ललितविस्तरमा उल्लिखित चौसाठ्ठी मध्ये एक भौमदेव-लिपि देखिनु पनि हो।

**प्रताप मल्लको हनुमानढोका जलद्रोणी अभिलेखमा प्रयुक्त पन्ध्र लिपि**

**ने.स. ७७४। इ.सं. १६५३ माघ शुक्ल पञ्चमी**

| अभिलेखको | नाम | वर्तमान नाम |
|---|---|---|
| १. गोलमोल | आखट्ट | गोलमोललिपि |
| २. पार्सि | " | फारसी " |
| ३. तिरहुति | " | मैथिली " |
| ४. रंज | " | रञ्जना " |
| ५. माझेपात | " | (मध्यप्रदेशीय ?) " |
| ६. देवनागर | " | देवनागरी " |
| ७. सैँया उजेन | " | तिब्बती उछेन |
| ८. गौडिया | " | बङ्गाली " |
| ९. आर्ब्बी | " | अरबी " |
| १०. कयथिनागर | " | कैथी " |
| ११. सैँया उमेत | " | तिब्बती उमेत" |
| १२. कटाक्षर | " | (तामिल कोल एलुत्तु?) " |
| १३. नेवार | " | नेवारी/नेपाल |
| १४. काश्मिरी | " | शारदा " |
| १५. फिरिङ्गी | " | रोमन " |

वास्तवमा यो गोली लिपि कुन हुनसक्छ त? संभावनाको खोजी गरौं। दिनेशचन्द्र रेग्मीले (२०४८) लिच्छवि लिपिको चौथो चरण (ई. ६४३-७३३) मा अ, क, न, य, ष अक्षरहरू दुई दुई प्रकारको चलेको बताउँछन्। यीमध्ये एकलाई हामी ई. ५७६ तिर प्रचलित गोली लिपि पछि देखापरेको शैली मात्र सकिएला कि? गोली लिपिका सन्दर्भमा प्रतापमल्ल (ई. १६४१-७४) को ई. १६५३ को हनुमानढोका जलद्रोणी अभिलेखमा उल्लिखित पन्ध्र लिपि मध्ये सबभन्दा अगाडि "गोलमोल आखट" प्रयोग गरिएको अर्थपूर्ण छ जस्तो लाग्छ। पौने एघार सयवर्षदेखि नेपालमा प्रचलित हुनाले नै प्रतापमल्लले यसलाई अग्रस्थान दिएको भान हुन्छ। यति हो, यसबीचमा 'गोली' बाट गोल भयो र मोल' (शीर) थपियो। गोलमोललाई कालान्तरमा भुजिंमोल भन्न थालिएको बुझिन्छ। प्रताप मल्लको पालासम्म भुजिंमोल नाम नरहेको देखिन्छ। यसरी भौमगुप्तको ई. ५७६ तिरको गोली अक्षर ई. १६५३ तिर गोलमोल भनियो र अचेल भुजिंमोल साथै गोलमोल पनि भनिन्छ भन्ने देखिएको छ।

## ४. तिब्बती लिपि

नेपालको प्राचीन लेखनको इतिहासमा तिब्बती लिपिको महत्त्वपूर्ण ठाउँ छ। पश्चिमको सिञ्जा राज्यको अभिलेखप्राप्तिको शुरूदेखि नै तिब्बती लिपि पाइन थालेको हो। चौधौं शताब्दीका राजा रिपु मल्ल (ई. १३१२-१३) को सिञ्जा लामाथाडा सेरांको शिलालेखमा सबभन्दा पहिले तिब्बती लिपिमा "ऊँ मणिपद्मे हुँ" लेखिएको छ। त्यसपछि देवनागरी शुरू हुन्छ। सत्यमोहन जोशी, कर्णाली लोक संस्कृति, इतिहास, २०२८, पृ. १६०) राजा आदित्य मल्ल (ई. १३२१-१३२६) को गोरखा लार्के हिमालफेदी रिगाउँको सिरानमा रहेको ताघबाइ गुम्बामा देवनागरीमा नेपाली र तिब्बती लिपिमा तिब्बती भाषाको ई. १३२१ को एउटा तामापत्र पाइएको छ। उहीं पुण्यमल्ल (ई. १३२८-३७) को त्यस्तै अर्को ई. १३२८ को तामपत्र पनि पाइएको छ। मोहनप्रसाद खनाल, मध्यकालीन अभिलेख २०३०) काठमाडौं उपत्यकामा पनि यदाकदा तिब्बती अभिलेख राखिएको पाइएको छ। प्रताप मल्लको ई. १६५३ को पन्ध्र लिपिमा "सैँया उजेन आखट" (भोटको उचेन लिपि) र "सैँया उमेत आखर" (भोटको उमेत लिपि) उल्लेख गरिएको छ। हाल राष्ट्रिय अभिलेखालयमा ठूलो परिमाणमा तिब्बती ग्रन्थ रहेको छ। भीमं शमशेरको पालादेखि त्यहाँ 'भोटे फाँट' खोलियो। नेपाल-जर्मनी पाण्डुलिपि संरक्षण योजनाले राष्ट्रिय अभिलेखालय र नेपालमा यत्रतत्र छरिएका २० हजार भन्दा बढी तिब्बती ग्रन्थको छविचित्र (माइक्रोफिल्म) लिइसकिएको छ।

नेपालमै करीव सात सय वर्षदेखि चल्दै आएको यो तिब्बती लिपिको उत्पत्ति कसरी भयो होला भन्ने कुरा जान्न लायक छ। तिब्बतको इतिहासमा सातौं शदी पूर्वार्धको स्रोङ्चन गम्पो (ई. ६१७-६४९) ई. ६३० तिर राजा भएपछि थोन गाउँका (थोन्मी) साम्भोटा वा साम्बोडा ("असल भोटिया") नामको आफ्नो मन्त्रीलाई (कसैले राजदूत/भारदार भन्छन्) भारतमा पन्ध्र जना साथीहरूका साथ बौद्ध ग्रन्थको अध्ययन गर्न पठाए। भनिन्छ उनै थोन्मी साम्भोटाले पढाएर नेपालकी राजकुमारी भृकुटीलाई ई. ६४० मा आफ्नो साथमा राजाको निमित्त तिब्बत लगेका थिए। (राहुल सांकृत्यायन, तिब्बत में बौद्धधर्म, ई. १९४८) साम्भोटाले तिब्बत फर्की तिब्बती लिपिमा तिब्बती व्याकरण बनाए र अनेक बौद्ध ग्रन्थ अनुवाद गरे। त्यसबेला तिब्बतीलिपि भन्नु साम्भोटा र उनका शिक्षार्थी साथीहरूले लेख्ने गरेको कुटिललिपिकै एक शैली हो। तिनीहरूले कुटिलालाई सरलीकरण गरे र आफ्नो भाषालाई चाहिने मात्र लिपि प्रयोग गरे, जुन तिब्बती लिपिको रूपमा विकसित भयो।

## ५. किराँत लिपि

यसका तीनथरि नाम चल्तीमा छन्। ई. १९२५ मा किरात-मुन्धुम (विहारः राजेन्द्रराम, ई. १९६१) को खोजी गर्दा ईमानसिङ चोम्जोङ (ई. १९०४-१९७६) ले विविध ग्रन्थको रूपमा तीन थरि लिपिमा सो लेखिएको पाए। उनले ती शिरिजङ्गा लिपि, रोङ लिपि र चन्द्रपुलिङ लिपि हुन् भनेका छन्। यहाँ चन्द्रपुलिङ कुन लिपिलाई किन भनिएको हो थाहा पाउन सकिएको छैन। हेमराज शाक्य (२०३०) किरातलिपि र चन्द्रपुलिङ लिपि एकै मान्दछन्। रोङलिपि चाहिं अलग लेप्चा लिपिलाई भनिएको हो।



**किराँत लिपिका लागि शहीद भएका शिरिजङ्गा**

किराँत लिपिबारे हामीलाई थाहा दिने मूल व्यक्ति ईमानसिङ चेम्जोङ हुन्। उनले यसबारे आफ्नो दुई लेख "किराँत लिपिमा आविष्कार" (नेपाल त्रि. वि. सांस्कृतिक परिषद्, ई. १९६५) र "शिरिजङ्गा देवाङ्सीको जीवनी" (बसुधा, ११:७। ई. १९६८, अङ्ग्रेजी) र तीन पुस्तकहरूमा चर्चा गरेका छन्। यसैको आधारमा अरूहरूले पनि किराँतलिपिको चर्चा गरेका छन्। चेम्जोङका साथै हेमराज शाक्यले यसको उत्पत्ति नवौं शताब्दी र ईश्वरचन्द्र राही (लेखन कलाका इतिहास, प्रथम, ई. १९८३) ले आठौं शताब्दीमा भएको अनुमान गरेका छन्।

शिरिजङ्गा किराँतलिपि चलाउने राजाको नाम हो भनिन्छ। उनीबारे निम्न किंवदन्ती बताइन्छः-

१. शिरिजङ्गाले ईशाको नवौं शताब्दीतिर पूर्वी नेपाल किराँत प्रदेशका साना राजाहरूलाई जिती ठूलो राज्य बनाए।

२. उनका पुर्खामा एक जना गालिङ्गा भए।

३. घोर तपस्या गर्दा शिरिजङ्गालाई एक दिन निसाममाङ (सरस्वती) ले दर्शन दिइन् र भनिन्- पहिले किराँत प्रदेशमा आउँदा किराँतीहरूले विद्या नसिकेकाले तिब्बत गई शिलालेख विद्या सिकाएँ। अब तिमीलाई सिकाइदिन्छु। उनले शिरिजङ्गालाई हिमालय फोकताङलुङ्मामाको ओडारमा लगी शिलालेख विद्या सिकाइन्।

यी कुराहरू तिब्बतको जीवनी साहित्य अनुसार त्यहाँका राजा स्रोङ्चन गम्पो (ई. ६१७-४९) को जीवन घटनावलीसँग मिल्छ। (राहुल सांकृत्यायन, तिब्बत में बौद्ध-धर्म, ई. १९४८) जस्तोः-

१. ब्रह्मपुत्रको तल्लो प्रदेश कोङ्पोको यर्लुङ बस्तीमा बस्ने गम्पोले तिब्बतको वुस (मध्य) र चङ (नेवारी सँ) प्रदेश जिती पश्चिम गिल्गित र उत्तर तुर्किस्तानसम्म आफ्नो सीमा पुऱ्याए र ई. ६३३ तिर ल्हासामा राजधानी सारे।

२. उनको एक प्रतापी पुर्खा ग्न्याख्रीचन्पो भए। उनलाई भारत, उत्तरप्रदेश कोशलका ई. पू. ६ शताब्दीका बुद्धकालीन राजा प्रसेनजितका एक पुत्र हुन् भन्ने ठानिन्छ।

३. स्रोङ्चन गम्पोलाई उनले भारत पठाएका थोन्मी साम्भोटूले कुटिललिपि सिकी तिब्बतमा फर्केर आफ्नै लिपि बनाएको ई. ६४० को दशकमा ४ वर्षसम्म व्याकरण र लिपि सिकाए। गम्पोले सिकेका कुरा चगूसूरि (लोहपर्वत) को गुफामा उत्कीर्ण आज पनि देख्न सकिन्छ। स्रोङ्चन गम्पो बस्ने एक दरबारको नाम लुङफोटाङ (नागप्रासाद) हो।

## नेपालमा प्रचलित लिपि

### प्रयोग-काल, क्षेत्र र वंशावली

| लिपि | काल | क्षेत्र |
|---|---|---|
| १. ब्राह्मी | (ई.पू. ३ - ई. ३ शताब्दीसम्म), | तराई र भारत |
| २. गुप्ता | (ई. ४-५ शताब्दीसम्म, नेपालमा पूर्वलिच्छवि) | भारत |
| ३. पूर्वलिच्छवि | (ई. ५-६ शताब्दीसम्म), | तत्कालीन नेपाल-मण्डल |
| ४. कुटिला | (ई. ६-९ शताब्दीसम्म), नेपालमा उत्तरलिच्छवि), | भारत |
| ५. उत्तरलिच्छवि | (ई. ६-९ शताब्दीसम्म), | तत्कालीन नेपाल-मण्डल |
| ६. तिब्बती | (ई. ७२ शताब्दीदेखि, नेपालमा १६ शताब्दीदेखि), | हिमाली भेग |
| ७. नेवारी | (ई. ९ शताब्दीदेखि, नेपाललिपि), | नेपाल-मण्डल (बाग्मती अंचल) |
| ८. देवनागरी | (ई. ९ शताब्दीदेखि, नेपालमा १३ शताब्दीदेखि), | पश्चिम नेपाल |
| ९. मैथिली | (ई. ११ शताब्दीदेखि, नेपालमा १४ शताब्दीदेखि), | सिमरौनगढ-जनकपुर |
| १०. कैथी | (ई. ११ शताब्दीदेखि, नेपालमा १७-१९ शताब्दीसम्म | सिमरौनगढ-विजयपुर |
| ११. किराँती र रोङ | (ई. १७ शताब्दीदेखि), | लिम्बूआन, पूर्वी नेपाल। |




यस तुलनाबाट ई. ६४० देखि ई. १७४० सम्म ११०० वर्षको लामो अन्तराल र ल्हासादेखि किराँतप्रदेशसम्मको लामो दूरताले गर्दा तिब्बती स्रोङ्चन गम्पो किराँती शिरिजङ्गा भयो र तिब्बती ग्न्याख्रीचन्पो किराँती गालिजङ्गा भयो। यिनको भाषिक ध्वनि साम्य यस प्रकार खुट्याउन सकिन्छः-

| | |
|---|---|
| स्रोङ - शिरी | ग्न्या - गा |
| चन् - जङ् | ख्री - लि |
| गम्(पो) - गा | (पो) - गा |

यसबाट स्पष्ट भयो शिरिजङ्गा लिपि भनेको तिब्बती लिपि रहेछ। ११०० वर्षको यात्राले किराँतप्रदेशमा यसले अलग्गै स्थानीय रूप लियो र भिन्नै किराँती लिपि बन्यो। यस भिन्न लिपिलाई पहिलेको लिपि संरक्षक शिरिजङ्गाकै अवतार हुँ भन्ने एक देवाङ्सी (किराँत पण्डित)ले( ई. १७३४) देखि किराँत लिपि नेपालको लिम्बूवान र भारतको सिक्किममा प्रचार गर्दा सिक्किमका तिब्बती लिपिका कट्टर समर्थक लामाहरूले ई. १७४१ मा शहीद बनाएको घटना यत्रतत्र लेखिएको छ। रूखमा बाँधी धनुष हानी शहीद बनाइएका अठारौं

शताब्दीका अज्ञात किराँतलिपिविद् उनी अहिले शिरिजङ्गा देवाङ्सी (ई. १७०४-१७४१) नामले प्रसिद्ध छन्। तिब्बती लिपिबाटै किराँत लिपि विकसित भएको हो भन्ने कुरा तिब्बतीमा जस्तै किराँतीमा पनि 'अ' लिपिबाटै सबै स्वरको बाह्राखरी लिपि- वर्णावली चल्ने गरेको र कतिपय आधारभूत वर्णको समानताले प्रमाणित हुन्छ।

चित्र कठिन भएका किराँती नामहरू बुझाउने तामाङी शब्दले चाहिं तिब्बतीसँग सामीप्य राख्ने प्रसङ्ग यहाँ उल्लेखनीय छ। सन्तवीर लामा लेख्छन्- "स्वोमसेन गेम्पोका पाँच पुस्ता अघि थोथरी ङ्वानचन कालमा स्वर्गबाट वर्षा भएका पुस्तकहरू स्वोमसेन गेम्पोले तिब्बती भाषामा अनुवाद गरी धेरै पुस्तकहरू लेखे। थोम्बे सम्बुनाको नेतृत्वमा १५ जना विद्यार्थी भारतमा पढ्न पठाए।" (नाङ्वा साङ्गे काठमाडौं: स्वयं २०२१, पृ. ५८)

यहाँ उल्लिखित नामहरूको तुलना यस प्रकार गर्न सकिन्छ। जस्तो:-

| तिब्बती | तामाङ | किराँती |
|---|---|---|
| १. स्रोङ्चन गम्पो | स्वामसेन गेम्पो | शिरिजङ्गा |
| २. ग्न्याखी चन्पो | ङ्वानचन | गालिजङ्गा |
| ३. थोन्मी साम्भोटा | थोम्बे सम्बुना | थेबे....? |

## ६. रोङ लिपि

नेपालको लिम्बूवानमा पनि किराँती जस्तै तिब्बतीबाट विकसित रोङलिपि प्रचलित छ। यसलाई लापूचा वा लेपूचा लिपि भनिन्छ। ईमानसिङ चेम्जोङले लाप्चा- नेपाली-अङ्ग्रेजी शब्दकोश (ने.रा.प्र.प्र., २०२६) को भूमिकामा यसको परिचय र लिपि नमूना पनि दिएका छन्। त्यसमा उहाँले शिरिजङ्गा लिपिकै जस्तो सातौं शदीतिरको राजा मखरोङ (मोरोङ) ले रोङलिपि चलाएको वृतान्त दिएका छन्। अहिले सिक्किममा लाप्चा भाषारोङलिपिको बढी प्रयोग गरिन्छ। त्रिभुवन विश्वविद्यालय केन्द्रीय पुस्तकालयमा ६ ओटा रोङ लिपिका पुस्तकहरू भएको बताइन्छ।

## ७. नेपाल लिपि

नेपाल लिपि नेपालमण्डल (काठमाडौं उपत्यका र वरपर) मा पहिले व्यापक रूपले प्रचलित साझा लिपिलाई बुझाउन प्रयोग गरिएको छ। भुजिंमोल, रञ्जना, आदि भेदसँग छुट्याउन यस साझा रूपलाई "प्रचलित लिपि" भन्ने चलन अचेल बढेको छ। यस शब्दको प्रयोगले यसको अन्य शैलीभन्दा भिन्न साझा प्रयोग हुने शैली बुझिन्छ। तर पनि सबै शैलीलाई समेटी बुझाउनु पर्दा सामान्य रूपले 'नेपाललिपि' भन्न सकिन्छ। यसको नौ भेद रहेको चर्चा लिपि पुस्तकहरूमा पाइन्छ रञ्जना, भुजिंमोल, कुँमोल, कँयमोल, गोलमोल, पाचुमोल, हिंमोल, लितुमोल र प्रचलित। यो भेद खास गरी मोल (शिरवाची संस्कृत मुणुबाट बिकसित, डिको) को प्रकार अनुसार रहेको छ। मूल अङ्ग सबैमा केन्द्रीय रूपले प्रायः एकै रहेको छ। दिनेशचन्द्र रेग्मी "अक्षरका आन्तरिक स्वरूपमा मौलिक भिन्नता नदेखिनु नेवारी लिपिको अर्को विशेषता हो" भन्दछन्। यसमा केही अक्षर एकै संयुक्त लिपिमा गाभिने शैली कूटाक्षरलाई लिइएको छैन।



लुम्बिनीको अशोक स्तम्भ

लिपिको नामकरण आवश्यकताले पनि गर्नुपर्ने हुँदोरहेछ। सङ्क्रमणकाल (ई. ८७९-१२००)का रञ्जना, भुजिंमोल भिन्न नेपाललिपिलाई "पुरानो नेपाललिपि" भन्नुपर्ने अनुभव गरिएको छ। तर रञ्जना, भुजिंमोलको अधिक प्रयोग पछिको पछिल्लो मध्यकाल (ई. १४८२-१७६८) देखि अहिलेसम्म प्रयुक्त साझा नेपाललिपिलाई भने 'प्रचलित' भन्नुपर्ने अनुभव गरी त्यस्तो प्रयोग गर्ने गरिएको छ। यस प्रचलित लिपिलाई ई. १६५३ को प्रताप मल्लको पञ्च लिपिमा "नेवार आखर" भनिएको छ।

नेपाललिपि मध्यकालीन नेपालमण्डलको संस्कृत, नेवारी, मैथिली वा अन्य भाषाको माध्यम तथा साझा लिपि हो। यस लिपिमा यी भाषाका हजारौं अभिलेख-ग्रन्थ लेखिएका छन्। यस्तो साझा माध्यम लिपिको भूमिका यसले पौने नौ सय वर्षसम्म गर्‍यो। सवा दुई सय वर्ष यतादेखि नेपाललिपिको ठाउँमा देवनागरी लिपिले बिस्तारै ठाउँ लिंदै आयो र आज देवनागरी नेपालको साझा माध्यम लिपि बनेको छ।

पुरानो नेपाललिपिको प्रयोग ताडपत्र ग्रन्थमा सर्वप्रथम लङ्कावतार (ई. ९०८,, राष्ट्रिय अभिलेखालय), प्रज्ञापारमिता (ई. ९२०, महाबौद्ध, पाटन) र शिलाभिलेखमा शङ्करदेव (ई. ९२०) को पालाको काठमाडौं जैसीबहालको मञ्जुश्रीको मूर्तिको पादपीठमा भयो। मुद्रामा सर्वप्रथम यो लिपि शिवदेव (ई. १०९८-११२६) को शिवस्या (शिवका) मा भयो। एशियाटिक सोसाइटी अफ बङ्गाल, कलकत्तामा रहेको अभिज्ञान शाकुन्तलको बाह्रौं शदीतिरको सर्वप्राचीनप्रति नेपाललिपिमै लेखिएको छ। (हरप्रसाद शास्त्रीको सूचीपत्र, भाग ७, काव्य, ई. १९३४, पृ. २४०) यसको भाषा संस्कृत हो। (नेवारी भाषा हो कि भनेर 'समीक्षा' - ११२०। ई. १९९१ मे ३ मा शङ्का उठाइएको थियो।) यस्तै संसारका कतिपय प्राचीनतम् ग्रन्थहरू नेपाललिपिमा लेखिएका छन्।

७.१ भुजिंमोल लिपि नेपाललिपिको एक शैली यो नाम कहिलेदेखि प्रचलित भयो यसै भन्न सकिएको छैन। यो जनजिब्रोबाट रहेको नाम बुझिन्छ। माथि "गोली अक्षर" को प्रसङ्गमा यो गोलमोलकै अर्को नाम हुनुपर्ने कुरा यी दुईको शैली साम्यको आधारमा अनुमान गरिएको छ।

भुजिंमोल लिपिको शुरूआत भक्तपुर, तौमढी टोलको ई. १००५ को निर्भयदेवको अभिलेखमै भइसकेको छ। राष्ट्रिय अभिलेखालयको ताडपत्र ग्रन्थ विशपु धर्मोतर (ई. १०४३), राष्ट्रिय पुस्तकालयको योगसार समुच्चय (ई. ११७१) मा यसको प्रयोग भएको छ। यस लिपिको केही ताडपत्र ग्रन्थ ११-१२ शताब्दीको पाइन्छ र १३-१४ शदीमा यसको बढीभन्दा बढी प्रयोग पाइन्छन्। पहिलो नेवारी ग्रन्थ हरमोखला (ई. १३७४), उपलब्ध प्राचीनतम संस्कृत नारदस्मृति (ई. १३८०), नेपालको प्राचीनतम ऐतिहासिक ग्रन्थ गोपालराज बंशावली (अन्दाजी ई. १३८९) यही लिपीमा लेखिएका छन्।

७.२ रञ्जना लिपि मनलाई रञ्जन गर्ने लिपि हुँदा नेपाल लिपिको यो शैलीलाई रञ्जना भनि-

### ललित विस्तरको चौसट्ठी लिपिको नामावली

| | | |
|---|---|---|
| १. ब्राह्मी | २. खरोष्ठी | ३. पुष्करसारी |
| ४. अङ्ग | ५. बङ्ग | ६. मगध |
| ७. माङ्गल्य | ८. मनुष्य | ९. अङ्गुलीय |
| १०. शकारि | ११. ब्रह्मवल्ली | १२. द्राविद |
| १३. कनारि | १४. दाक्षिण्य | १५. उग्र |
| १६. संख्या | १७. अनुलोम | १८. उर्ध्वधनु |
| १९. दरद | २०. खास्य | २१. चीनी |
| २२. हून | २३. हूण | २४. मध्याक्षर विस्तर |
| २५. पुष्प | २६. देव | २७. नाग |
| २८. यक्ष | २९. गन्धर्व | ३०. किन्नर |
| ३१. महोरग | ३२. असुर | ३३. गरूड |
| ३४. मृगचक्र | ३५. वायुमरू | ३६. भौमदेव |
| ३७. अन्तरिक्ष देव | ३८. उत्तरकुरू दीप | ३९. अपरगो डादि |
| ४०. पूर्वविदेह | ४१. उत्क्षेप | ४२. निक्षेप |
| ४३. विक्षेप | ४४. प्रक्षेप | ४५. सागर |
| ४६. वज्र/वज्र | ४७. लेखप्रति लेख | ४८. अनुद्रुत |
| ४९. शास्त्रावर्त | ५०. गणावर्त | ५१. उत्क्षेपावर्त |
| ५२. निक्षेपावर्त | ५३. पादावर्त | ५४. द्विरूत्तर यावद्दशोत्तर पदसन्धि |
| ५५. अध्याहारिणी | ५६. सर्वरूत संग्रहणी | ५७. विद्यानुलोम |
| ५८. ऋषितपस्तप्ता | ५९. रोचमाना/ | दिव्यनिर्वचनीय |
| ६०. धरणी प्रेक्षणी | ६१. गगन प्रेक्षिणी | ६२. सर्वौषधि निष्यन्दा |
| ६३. सर्वसार संग्रहणी | ६४. सर्वभूत रूद्ग्रहणी | |

एको स्पष्ट छ। ललितविस्तरमा रोचमाना दिव्यनिर्वचनीय ("हेर्दा राम्रो लाग्ने") लिपिको उल्लेख छ। रञ्जना लेखनको विशेषता मोटो टाँका, चौडा अक्षर, कोणात्मक मोटो डिको आदि हुन्। यसलाई रञ्जा वा लञ्जापनिभनिन्छ प्रतापमल्लको बहुलिपि अभिलेखमा 'रंज' भनिएको छ। यसको उत्पतिको कारण लिपिकारको सुलेखन-उन्मुखता तथा अक्षर दिगो बनाउने मनसाय हुन सक्छ। अर्को कारण अक्षरमा सुवर्ण वारजत लेपन गर्ने क्रममा चौडा अक्षर चाहिने भएर पनि हुन सक्छ।

रञ्जना लिपिमा महायानी बौद्ध धार्मिक ग्रन्थ बढीभन्दा बढी लेखिएको छ। काठमाडौं थँबहिलको ने.सं. ३४४। ई. १२२४ को कालो भूमिमा सुन र चाँदीको मसीले रञ्जना अक्षर लेखिएको प्रज्ञापारमिता प्रसिद्ध छ। यो बर्सेनी श्रावण शुक्ल द्वादशीदेखि भाद्रकृष्ण चौथीसम्म "बहियो ब्वयगु" (बहिल देउता देखाउने) बेला प्रदर्शित हुन्छ। यो पुस्तक दर्शनार्थ बौद्धमार्गीहरू भोट र भूटानबाट पनि आउने गरेको सुनिन्छ। अर्को, पाटनको हिरण्यवर्ण महाविहारमा रञ्जना सुवर्णाक्षरले लिखित अभय मल्ल (ई. १२१७-५५) को पालाको अष्टसाहस्रिका प्रज्ञापारमिता चाँदीको एक भव्य सिंहासनमा राखिने र दिनहुँजसो दश बज्राचार्यहरूबाट सस्वर पाठ अद्यापि गरिने चलन पनि उल्लेखनीय छ। यस लिपिका ग्रन्थ, अभिलेख, वीजाक्षर तथा कूटाक्षर भोट, चीन, जापान, मङ्गोलिया, भूटानमा बडो आदरपूर्वक अहिलेपनि प्रयोग गरिन्छ।

७.३ कूटाक्षर कूट अर्थात् रहस्यमय कुरा लेखिएको बहु अक्षरयुक्त लिपिलाई कूटाक्षर भनिन्छ। यो मूलतः रञ्जना लिपिमा लेखिन्छ। यसको वर्णमाला अध्ययन गर्दा कवर्ग, चवर्ग, टवर्ग, तवर्ग, पवर्ग, अन्तस्थ, उष्म वर्ण र संयुक्ताक्षर जम्मा ८ संयुक्त लिपिमा पढिन्छ। (हेमराज शाक्य, २०३०)

ललितविस्तरमा एक द्विरूत्तर यावद्-शोत्तर पदसन्धि (दुईदेखि दश वर्णसम्म उत्तरोत्तर एकैमा मिलाएर लेख्ने) लिपिको चर्चा छ। यो एक प्रकारले कूटाक्षर भनेको हो। यसमा एकभन्दा बढी वर्णको मूलखण्ड तलतल गाँस्दै र मात्रा रेखा दायाँ थप्दै लगिन्छ। गाँस्ने शैलीको हिसाबले यसलाई 'पद-सन्धि भन्न सकिन्छ, तर यो लिपि प्रायः रहस्यात्मक महायानी बौद्ध मन्त्रलाई एकाक्षर पारी लेख्ने चलनले गर्दा कूटाक्षर भनिएको हो। यस शैलीमा लेखिने महायानी मन्त्र सप्ताक्षरी (ह क्ष म ल व र य) र षडक्षरी (ॐ मणि पद्मे हुँ) प्रसिद्ध छ। यी मन्त्र नेपालमा मात्र होइन भोट, चीन आदि देशमा पनि पाइन्छन्।

## ८. देवनागरी

देवनागरी नेपालको लागि ऐतिहासिक कालमा मूलतः पश्चिम नेपालको लिपि हो। मध्यकालीन सिञ्जा, डोटी तथा गोरखा राज्यमा सुरूदेखि नै यो लिपि प्रचलित थियो। यस क्षेत्रमा यो लिपि पाटलीपुत्र (पटना) को सम्पर्कबाट पुग्यो। पाटलीपुत्र एक नगर गनिन्थ्यो। पछि यहाँ विकसित कुराहरू नागर वा नगरी भनिए। नागरी लिपिको प्राचीनतम दृष्टान्त दक्षिणभारतको राष्ट्रकूट (राठौड) बंशी राजा दन्तीदुर्गको सामनगढबाट प्राप्त ई. ७५४ को दानपत्रलाई मानिन्छ। यसलाई नन्देर नगरमा विकसित मानी नन्दिनागरी भनिन्छ। उत्तर भारतको कन्नौज प्रतिहारवंशी राजा महेन्द्रपालको दिघवा दबौलीको ई. ८९८ को दानपत्रलाई देवनागरीको प्राचीनतम नमूना मानिन्छ। प्रताप मल्लको पन्ध्र लिपिमा यसलाई 'देवनागर' भनिएको छ।

दिनेशचन्द्र रेग्मी (२०४८) भन्दछन्- "पुरानो नागरी (देवनागरी) नेवारी लिपिको व्यापक परिधिभित्र विकसित हुँदै थियो भन्ने कुरा मान्नुपर्दछ। नागरीको विकासमा नेवारी लिपिको योगदानको स्वरूपलाई यसरी हेर्नु उपयुक्त हुनेछ।" यस्तो विचार नेपालका प्रायः जसो लिपिहरूको रहेको छ। यस सम्बन्धमा तलका विचार मननीय छ।

नव बृहत् भारतीय भाषाहरू दशौं-एघारौं शताब्दीताका विकसित भएको, त्यो भन्दा अघि ती भाषाहरू प्राकृत अवस्थामा रहेको तथा ती प्राकृत भाषा मूल आर्य (संस्कृत) भाषाबाट विकास भएको कुरा अब करीब सर्वमान्य कुरा भइसकेको छ। यस्तै ढङ्गले नवौं-दशौं शताब्दीताका नव बृहद् भारतीय लिपिहरू जन्मे। नव भाषाहरूमा कतिपय भाषिक समानता पाइए जस्तै नव लिपिहरूमा लिपिगत सहजातीय समान लक्षण पाइनु स्वाभाविकहो। यसो हुँदा देवनागरी, बङ्गाली, मैथिली, नेवारी, आदि लिपिहरूमा एक-अर्कोसँग मेल खाने स्वभाव हुनु स्वाभाविक हो। यसलाई एक-अर्कोबाट विकसित लिपि ठान्नु हुँदैन, बरू समानताको मात्रा बताउनु उपयुक्त हुनेछ। यी त दिदी-बहिनी लिपि हुन्। यिनका आमा कुटिला हुन् र हजुरआमा ब्राह्मी। हामीलाई थाहा छ आनुवंशिकता आमा र बजैका पनि आउनसक्छ र लिपिगत साधर्म्य त्यसैले हुने हो। यसो हुँदा "पुरानो नागरी नेवारी लिपिको व्यापक परिधिभित्र विकसित हुँदै थियो" भन्नेकुरो मान्न सकिंदैन।

देवनागरी प्राचीन नेपाल-मण्डलको लागि मैथिली, बङ्गाली जस्तै आयातित तथा विदेशी लिपि हो। यहाँ यसको निरन्तरता छैन। यस सम्बन्धमा लिपि-भूगोलको पनि



लेखक

ख्याल राख्नुपर्छ। जस्तो भाषा- भूगोल अनुसार एक भाषिकाको अर्को भाषिकासँग भिन्न आफ्नै भौगोलिक क्षेत्र हुन्छ, त्यस्तै लिपि-भूगोलमा एक एक लिपिको आफ्नो भूगोल क्षेत्र हुनुपर्छ। नेपाललिपि नेपाल-मण्डलको लिपि हो भने देवनागरी पश्चिम नेपाल र उत्तर भारतको लिपि हो।

नेपालमा प्राप्त देवनागरीको कृतिहरूमा बाल्मीकि रामायण (तिरहुतमा लिखित, ई. ११५४) र हरिवंश (वनारसमा लिखित, ई. १२७९) प्रसिद्ध छन्। शिलाभिलेखमा पाटन कुम्भेश्वरमा ई. १३९२ को जयस्थिति मल्लको शिलापत्र पाइएको छ र यसपछि केही अरू अभिलेख पाइएका छन्।



मैथिलीलिपि

## ९. मैथिली लिपि

मैथिली नेपालको दक्षिण तराई मिथिला राज्यको प्राचीन लिपि हो। यस लिपिको सुरूआत कर्णाटवंशी राजा नान्यदेव (ई. १०९७-११४५) ले आफ्नो राज्य नेपालको सिमरौनगढमा राजधानी बनाएदेखि भएको मानिन्छ। मिथिलाक्षरको पहिलो नमूना नान्यदेवको मन्त्री श्रीधर कायस्थले ई. १०९७ तिर भारत, बिहारको अन्धरा-ठाडीमा स्थापनागरेका कमलादित्य विष्णु मूर्तिको अभिलेखमा देखिएको छ। सिमरौनगढमा चौधौं शदीको शुरूमा मन्त्री गणेश्वरद्वारा सप्ताश्व र अरूणसहित सूर्य-प्रतिमा स्थापित गर्दा संस्कृत भाषा मैथिली लिपिमा प्रयोग गरिएको छ। हाल यो मूर्ति राष्ट्रिय सङ्ग्रहालयमा छ। (तारानन्द मिश्र, प्राचीन नेपाल २४) प्रताप मल्लको पन्ध्र लिपिमा यसलाई "तिरहुति आखट' भनिएको छ। ललितबिस्तरमा उल्लिखित "पूर्वविदेह लिपि" यससँग सम्बन्धित बुझिन्छ।

नेपाल उपत्यकामा मैथिली लिपिको प्रवेश कहिले भयो? हरिसिंह देव (ई. १३०५-१३२६) ई. १३२५ को आखिरमा सिम्रौनगढबाट भागेर दोलखातिर आए र त्यहाँ उनको मृत्यु ई. १३२६ मा भयो। त्यसपछि उनका रानी देवलक्ष्मीदेवी र जहानहरू भक्तपुरमा आई बसेपछि यस लिपिको प्रवेश नेपाल उपत्यकामा भएको देखिन्छ। राष्ट्रिय अभिलेखालयमा मैथिली लिपिमा लिखित ई. १५१३ को ताडपत्र ग्रन्थ श्रीमद्‌भागवत गीता रहेको छ। पशुपतिमा ई. १६५७ को मैथिली लिपिमा एउटा शिलास्तम्भ राखिएको छ। यस्तै अरू ठाउँ पनि पाइन्छन्।



हनुमान ढोकामा रहेको पन्ध्र लिपिको शिलास्तम्भ

## १०. कैथी लिपि

लिपिकार कायस्थहरूको एक विशेष लेखन पद्धतिलाई कैथी लिपि भनिन्छ। बोलचालमा यसलाई "काइते अक्षर" भनेर अस्पष्ट अक्षर भन्ने बोध गराइन्छ। यो खास गरी नागरीको एक भेद मानी कैथिनागरी भनिन्छ। प्रताप मल्लको बहुलिपिमा यसको प्रयोग गरिएको छ। यसलाई त्यहाँ "क्यथिनागर आखट" भनिएको छ। यसलाई खासगरी पश्चिम भारतीय लिपि मानिन्छ। एउटा पुस्तकमा कैथीको तिरहुती कैथी, भोजपुरी कैथी र मगही-कैथी तीन भेद देखाइएको छ। इमानसिंह चेम्जोङले लिम्बू-नेपाली अङ्ग्रेजी शब्दकोष (२०१८) को भूमिकामा पूर्वी नेपाल विजयपुरमा एक समय मैथिली भाषा तिरहुती कैथी सरकारी स्तरमा चलेको प्रसङ्ग प्रस्तुत गरेका छन् र त्यसको एक नमूना देवनागरी अनुवाद सहित दिएका छन्।

## ११. आयातित लिपि

माथि उल्लिखित लिपिहरूबाहेक नेपालमा बेलाबखत अरू विदेशी लिपिहरू पनि प्रयोग भएको पाइएको छ। राष्ट्रिय अभिलेखालयमा उत्तर एशियाली खोतन लिपिमा लेखिएका ग्रन्थ पनि पाइन्छ। यसलाई मध्य एशियालिपि पनि भनिन्छ। प्रताप मल्लले प्रयोग गरेको पन्ध्र लिपिमा "गौडिया आखट्" बङ्गाली लिपि हो भन्ने बुझिन्छ। महोतरी भटहीम विष्णुमूर्तिमा उत्कल (उडिस्सा) लिपि उत्कीर्ण छ। प्रतापमल्लले "कास्मिरी आखट्" भनी शारदा लिपि दिएका छन्। त्यहाँ "माझेपात आखट्" (मध्यप्रदेशको लिपि?) पनि छ। त्यहाँ प्रयोग भएको "कटाक्षर आखट्" एकप्रकारको तामिल लिपि जस्तो छ। नेपालको शिख समुदायमा गुरूमुर्खीलिपि प्रचलित छ। मारवाडीहरू पनि आफ्नो लिपि प्रयोग गर्छन्। पशुपति राजेश्वरी घाटमा ई. १४०८ को तामिल लिपिको शिलापत्र छ। बालाजु बगैंचामा तेलगु लिपिको अभिलेख देखिएको छ। काठमाडौंको राजा शिवसिंह (ई. १५७८-१६१९) ले अरबी लिपिमा आफ्नो नाम लेखी मुद्रा निकाले। प्रताप मल्लले "आर्बी आखट्" को नमूना दिएको छ। उनले ई. १६५५ मा फारसी लिपि पनि राखी मुद्रा निकाले। उनको पन्ध्र लिपिमा "पार्सि आखट्" पनि छ। प्रताप मल्लले रोमन लिपिलाई "फिरिङ्गी आखट्" भनी पन्ध्र लिपिमा अङ्ग्रेजी WINTER त फ्रान्सेली AVTONE र LHIVERT शब्द दिएका छन्। यसरी नेपालमा संसारका विविध लिपि प्रयोग गरिएको पाइएको छ।

- नयाँबानेश्वर



कवि

# साङ्बे र चुरे पनि बोक्नु पर्छ

- उदय निरौला

कति सुताउने चुरेहरूलाई
अब त! केवल सगरमाथा उठेर पुग्दैन
सगरमाथा त!
यसअघि धेरै पटक बोकियो
ऊ त! छाना हो
उभिएकै छ
ऊ त! उपहार हो
उठेकै छ
अब त-
चारकोसे उठाइनुपर्छ
चुरेलाई ब्यूँझाइनु पर्छ।
कति अलाप्ने-अझ पनि
स्वयम्भूलाई
शान्ति! शान्ति! पुकारेर
अब त! बूढो पशुपतिको मर्म बुझ्नुपर्छ
अब त! प्रत्येक श्रद्धाका द्यौरालीहरूले सुन्नुपर्छ।
थुप्रै भयो-
युग पुरियो
सगरमाथाको कथा हालेर
चुरेहरूलाई अझ- अझ बाउन्ने पारेको
अनि पुराण पुरियो असङ्ख्य- असङ्ख्य
लुम्बिनी गाएर
हरएक रने, धने र च्याउँसीका
द्यौरालीलाई बिर्सिएको
अब त! केवल
सगरमाथा - उभिएको देखेर
परायहरू डाक्नु हुन्न
केवल स्वयम्भू भजेर
प्रतिनिधिहरू-विदेशतिर भैलो खेल्नु हुन्न
किनकि
यस अघि
पटक-पटक यिनै संज्ञा जपेर
रणे, धने र च्याउँसीको हुलिया बोकेर
यहाँ थुप्रै अनुदानहरू आए
जहाँबाट आए
रने, धने र च्याउँसीका
द्यौरालीहरूलाई उस्तै-उस्तै छाडेर गए।
यसैले - अब
फगत सगरमाथाले मात्र उठेर हुन्न
प्रत्येक चुरेहरू उठ्नुपर्छ
प्रत्येक द्यौरालीहरू उठ्नुपर्छ
केवल- बुद्ध बोकेर पुग्दैन अब
सिङ्गै देशको साङ्बे बोक्नु पर्छ
होइन भने-
इतिहास र वर्तमानमा
कुनै विभेद नबुझेको ठहर्छ
यसैले- अब- बोक्नेहरूले
केवल- सगरमाथा नबोक
चुरेहरू पनि बोक
केवल ॐ मणि पद्मेहुँ मात्र नबोल
बरू साङ्बे र गुरूपूजा पनि बोल!

नोटः- साङ्बे भन्नाले लिम्बु भाषामा साना ईश्वरका थान भन्ने बुझाउँछ।

- इलाम